

क्वयेर युथ ग्रुप
Queer Youth Group

दर्ता नं : २४४९३५/०७७/०७८
स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

नेपाल संवत् ११४१/०५/१७
मिति २०७७ फागुन २१
२०२१ मार्च ५

Ref. No. चलानी : ०७१/७७/७८
Date मिति २०७७/११/२१
PN पत्र १

## सार्वजनिक वक्तव्य

प्रत्येक वर्ष झैँ यस वर्ष पनि मार्च ८ तारिखका दिन **अन्तर्राष्ट्रिय महिला दिवस**को उपलक्षमा हामी **क्वयेर महिला गौरव यात्रा** मनाउँदैछौँ। यो गौरव यात्रा हामीले सन् २०१९ देखि मनाउन सुरु गरेका हौँ। कोभिड-१९ माहामारीका कारण सन् २०२० मा यो कार्यक्रम स्थगित भएको थियो भने यस वर्ष सन् २०२१ मा **तेस्रो वार्षिक क्वयेर महिला गौरव यात्रा** आयोजना हुँदैछ। अन्तर्राष्ट्रिय महिला दिवसका दिन बिहान ७ बजे यैँ / काठमाडौँ स्थित ब्वज्याख्यः / भृकुटीमण्डपमा हुने मूलधार महिला ऱ्यालि सँग सँगै क्वयेर महिला गौरव यात्रा पनि ऱ्यालि गर्नेछ।

यस वर्ष हाम्रो नारा 'अब देखि सबै महिला' रहेको छ। महिला आन्दोलन भित्र पनि महिलालाई हेर्ने दृष्टिकोण संकीर्ण छ। महिला भन्नाले योनी लिएर जन्मेका मात्र र पुरुषसँग सम्बन्ध राख्ने वा राख्न चाहने मात्र भन्ने सोच रहनाले अन्तरलिङ्गी यौन विशेषता भएका महिलाहरू, पारलैङ्गिक महिलाहरू तथा विषमयौनिक (हेट्रोसेक्सुअल) बाहेकका महिलाहरू महिला आन्दोलन भित्र पनि वहिष्करणमा परेका छन्। यही वहिष्करणलाई समाप्त गर्नका लागि हामी यस वर्ष सबैमाझ आवहान गर्दैछौँ। राज्यले पनि 'अन्यलिङ्गी'को कानून मार्फत् सबै अन्तरलिङ्गी व्यक्तिहरू तथा पारलैङ्गिक व्यक्तिहरूलाई उनीहरूको लैङ्गिक पहिचान विपरीत 'अन्यलिङ्गी' उल्लेख गरेको परिचयपत्र बोक्न बाध्य पारेको छ। कतिपय सञ्चारमाध्यमहरूले अङ्ग्रेजी शब्द 'ट्रान्सजेण्डर', नेपाली भाषामा 'तेस्रोलिङ्गी' भन्ने गलत बुझाई प्रचलनमा ल्याएको हुनाले पनि पारलैङ्गिक (ट्रान्सजेण्डर) व्यक्तिहरू आफ्नो लैङ्गिक पहिचान विपरीतको शब्दावलीबाट सम्बोधन हुन बाध्य भएका छन्। पारलैङ्गिक महिलाहरू महिला हुन्, 'महिला' उल्लेख भएको परिचयपत्र चाहन्छन्। अन्तरलिङ्गी यौन विशेषताका महिलाहरू महिला हुन्, 'महिला' उल्लेख भएको परिचयपत्र चाहन्छन्। पारलैङ्गिक महिलाहरूले राज्यका विभिन्न निकायहरूमा आफ्नो पहिचान विपरीत रहेका परिचयपत्रहरू 'महिला' उल्लेख भई आफ्नो लैङ्गिक पहिचानको सही प्रतिनिधित्व गर्ने नाम सहित संसोधनका लागि दिएका निवेदनहरूको यथाधीघ्र सुनुवाई गरि आवश्यक कानून बनाउन र संसोधन गर्न समेत माग राख्दछौँ।

यस वर्षको नाराको ह्यासट्याग **#अबदेखिसबैमहिला** रहेको छ भने क्वयेर महिला गौरव यात्राको ह्यासट्याग **#NepalWomxnPride** र सन् २०२१ का लागि **#NeWoP2021** रहेका छन्। यस बारे थप जानकारी पाउन हाम्रो वेबसाइट हेर्नुहोस् : https://nepalprideparade.com/queer-womxn-pride-nep/



रुक्शना कपाली
कार्यकारी निर्देशक

ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup